# मुक्तिनाथ : केही ऐतिहासिक तथ्य

—रमेश ढुङ्गेल

मुक्तिनाथको प्राचीनताका विषयमा ठोस रूपले प्रकाश पार्ने सामग्रीको अभाव छ । नीलगिरी, मुक्तिनाथ हिमाल, दामोदर हिमाल जस्ता पवित्र हिमशृङ्खलाले घेरेको, कृष्णा गण्डकीको स्रोत स्थलको रूपमा स्कन्द-पुराण, वराहपुराण जस्ता पौराणिक ग्रन्थहरूमा मुक्ति-नाथको महिमा गाइएको छ । (योगी २०१३: पृ. १२५ मूल संस्कृत खण्ड) तर पुराण बाहेक अन्य ऐतिहासिक स्रोतमा भने मुक्तिनाथको चर्चा निकै पछिदेखि मात्र पाइन्छ । मुक्तिनाथ मन्दिर र आसपासका सांस्कृतिक र पुरातात्विक महत्वका वस्तुहरूले पनि मुक्तिनाथको प्राचीनतालाई मध्यकालभन्दा अगाडि पुऱ्याउन दिदैनन् । यसो भए तापनि यस देवस्थललाई हिन्दू तथा बौद्ध दुवैले धेरै पहिलेदेखि नै उच्च स्थान दिएर मान्दै आएको तथ्य-लाई भने भुल्न सकिंदैन । हिमवत् प्रदेशका महत्वपूर्ण तीर्थस्थलहरूलाई हिन्दू जगतमा चिनाउने काम विभिन्न पुराणहरूको माध्यमबाट भएको कुरामा दुईमत हुन सक्दैन । खासगरी भारतमा गुप्त साम्राज्यकालमा सम्पा-दन गरिएका हिन्दू पौराणिक साहित्यले यस काममा महत्वपूर्ण भूमिका खेलेको देखिन्छ । हिमालयबाट भारतीय मैदानमा झर्ने ठूलठूला गङ्गा, यमुना, गण्डक जस्ता नदीहरूको स्रोत स्थलको खोजीको क्रममा तिनका अन्य नदीहरूसंगका अनेक संगम स्थलहरूका साथै उक्त नदीका प्रस्रवण क्षेत्रका प्राकृतिक रमणीय स्थलहरूलाई हिन्दू तीर्थस्थलको रूपमा परिचित गराउने कामको प्रथम पाइला त्यसै हुनाले गुप्तकालमा चालिएको थियो भन्न सकिन्छ ।

मुक्तिनाथको विषयमा भने केही तिब्बती स्रोतहरू-मा हिन्दू स्रोतभन्दा पहिले उल्लेख आएको छ । तिन-मध्ये बाह्रौं शताब्दीताकाको लद्दाखी स्रोतमा मुक्ति क्षेत्रलाई छु–ला–मे–वर, दो–ला–मे–वर भनिएको चर्चा यस प्रसङ्गमा उल्लेखनीय छ । (फ्रांके १९७२ : पृ. ३५ तिब्बती मूल पृ. ९६ अनुवाद)[1] । पानीबाट आगो बल्ने ठाउँ, ढुङ्गाबाट आगो बल्ने ठाउँ भन्नलाई यसो भनिएको हो । अझ स्थानीय मानिस तथा तिब्बतीहरू सा–ला–मे–वर, छु–ला–मे–वर र दो–ला–मे–वर (माटो, पानी र ढुङ्गाबाट आगो बल्ने) ठाउँ भनेर मुक्तिनाथको ज्वालाजीलाई चिनाउँछन् र चिन्दछन् । मुक्तिनाथको

---

१. लद्दाखका राजा ल्हा–छेन–उव्–पल् (वि. सं. ११३७–११६७) ले लोवो प्रदेषको छु–ला–मे–वर सम्म कज्याएको चर्चा लद्दाखी स्रोतमा परेको छ । छु–ला–मे–वर भनेको पानीबाट आगो निस्कने (ठाउँ) हो जुन मुक्तिनाथको ज्वालाजीलाई भनिएको हो । तर फ्रांकेले तिब्बतीबाट अनुवाद गर्दा 'छु–ला–मे–वर' को अर्थ एक तलाउ भनेर गरेका छन् ।

वर्तमान मन्दिर नजीकै जमीनबाट ३ थरी ज्वाला निस्कने स्थल अहिले पनि छँदैछ । त्यस ठाउँलाई हिन्दूहरूले पहिले पहिले ज्वालाजी भन्ने गर्दथे भने (वि.सं. १९६१ को सनदमा) हिजोआज ज्वालामाई। बौद्धहरूले भने उक्त ज्वाला प्रज्ज्वलित हुने ठाउँमा गोन्पा बनाएर ज्वाला-लाई एक बौद्ध तीर्थस्थलको रूप दिएका छन् । कुनै कुनै तिब्बती स्रोतमा मुक्ति क्षेत्रलाई "छु–मिग–ग्या–चा" भनिएको देखिन्छ । मुक्तिनाथको प्रदर्शिका (गाइड) रूपको एउटा तिब्बती पुस्तिका प्राप्त भएको छ, जसलाई "छु–मिग–व्र्ग्य–र्च–व्र्ग्यद । स्कु–छव्-ग्तेर-ल्ङ । मु–ले–गङ्र्–गु–रू–ग्सङ–फुग–सोगस्–क्यी–दकर–छग् –ग्सल–ग्र्ड्रा–मे–लोङ ङो–म्छर–च्यन–र्नमस् " भनिन्छ । त्यस पुस्तिकामा मुक्तिक्षेत्रसंग तिब्बती बौद्ध जगतमा ख्यातिप्राप्त तान्त्रिक सिद्ध पद्म संभवको सम्बन्ध देखाइएको छ (टुची १९५६ : पृ. १०) । यसैगरी काली-गण्डकीको स्रोत स्थल र मुक्तिक्षेत्र अन्तर्गत पर्ने अर्को वैष्णव तीर्थ स्थल "दामोदर कुण्ड" लाई पनि पद्मसंभवसंग नै सम्बन्धित गराइएको पाइन्छ (ढुंगेल २०४२ :पृ. ५) ।

स्कन्दपुराणको हिमवत् खण्ड कृष्णा गण्डकी माहात्म्यमा भने पहिले ब्रम्हाजीले मुक्तिक्षेत्रको मध्य भागमा बसेर तपस्या गरेर त्यहाँको पवित्र जलमा अग्निको आवाहन गरेर हवन गरेको र अग्नि र जल परस्पर-मा नमिल्ने वस्तु भए तापनि दुवै वस्तुको आश्रयमा ब्रम्हाजी बसेको कुराको चर्चा छ। पछि त्यही ठाउँमा अनेक देवताहरू पनि आई ब्रम्हाजीले हवन गरेको पञ्चामृतले युक्त हवीलाई बल्दो ज्वालाको रूप लिएर ग्रहण गरेको र यसरी अग्नीले हविको ग्रहण गर्दा जला-ग्नी मूर्ति भएको हो भन्ने पनि चर्चा छ। त्यस्तै उक्त जलाग्नीमध्ये विष्णुको मूर्तिचाहि जल हो र शिवको चाहि अग्नि हो र त्यस पवित्र स्थलमा ब्रम्हादि देवताहरूले बास गरिरहन्छन् भन्ने पनि चर्चा "हिमवत् खण्ड" मा परेको छ (योगी, हिमवत्खण्ड : २०१३, पृ. १२६ मूल र १३० अनुवाद) ।

हिमवत्खण्डमा वर्णित उपर्युक्त चर्चाबाट पहिले–पहिले ज्वाला बाहेक अर्को मुक्तिनारायणको छुट्टै मन्दिर वा तीर्थ भएको कुरा बुझिदैन । त्यहाँ खाली पानीबाट आगोको ज्वाला निस्कन्थ्यो र त्यही आगो र अग्नि ज्वाला मध्ये पानीलाई चाहि विष्णु (नारायण)को रूपमा र अग्निलाई चाहि शिवको रूपमा मानिन्थ्यो भन्ने कुराको मात्र चर्चा परेको देखिन्छ । यसैगरी पुराना तिब्बती स्रोत-मा पनि त्यस क्षेत्रमा छु–ला–मे–वर अर्थात् "जलाग्नी ज्वाला"को मात्र चर्चा पाइन्छ ।

यसरी हेर्दा मुक्तिनाथको मूल मन्दिर तथा आस-पासका अन्य देवस्थलहरूमध्ये सर्वप्राचीन देवस्थलको रूपमा ज्वालाजीलाई मान्नु पर्ने हुन्छ। हिन्दू तथा बौद्ध दुवै स्रोतले उक्त क्षेत्रको पवित्र दैनिक स्थलको रूपमा ज्वाला-जीलाई नै सर्वप्रथम देखाएको छ । यस किसिमले मुक्ति क्षेत्रका मानव निर्मित धार्मिक वस्तु तथा देवस्थलको स्थापना हुनुभन्दा सयौं–सयौं वर्ष पहिलेदेखि नै मुक्ति-नारायण (विष्णु) र शिवको प्रतीकको रूपमा हिन्दूतर्फ-बाट र चेन–रे–शिग (लोकेश्वर)को रूपमा बौद्धतर्फबाट त्यहाँको प्राकृतिक ज्वालालाई मानिदै आएको कुरालाई विना विवाद स्वीकार्नु पर्ने हुन्छ । तर पछि पछि आएर उक्त विष्णु र शिवको प्रतीक मानिने ज्वालास्थललाई बौद्ध गोन्पामा नै परिणत गरिएको छ र हिन्दूहरूको आकर्षण कम मात्र त्यसतर्फ रहन थालेको देखिन्छ । वास्तवमा मुक्तिनारायणको मूर्ति वनाई मुक्तिनाथको रूपमा छुट्टै मन्दिर स्थापना गरेपछि आएको परिवर्तनको रूपमा नै यस घटनालाई मान्नु पर्ला जस्तो लाग्छ । जुन घटना नेपाल एकीकरणभन्दा अगाडिको मान्ने केही ऐतिहासिक आधारहरू पाइएका छन् ।

नीलगिरी, धवलागिरि, दामोदर हिमाल जस्ता सुशोभित कृष्णागण्डकी जस्तो पवित्र नदीको स्रोत स्थल स्वच्छ र पवित्र स्थल जसलाई मुक्तिक्षेत्रको रूपमा हिन्दू-हरूले महिमा गाएर आदर गरे; त्यसलाई तिब्बती र तिब्बती मूलका स्थानीय मानिसहरूले पनि उत्तिकै वर्णन तथा आदर गर्दै आएको देखिन्छ । हिन्दूहरूले भन्दा स्थानीय उत्तरी क्षेत्रका जनजातिले नै उक्त क्षेत्रलाई पहिलेदेखि तीर्थस्थलको रूपमा मान्ने गरेको कुरा ऐतिहा-सिक स्रोतले देखाएको छ । यसैगरी ज्वालाजीलाई बौद्ध गोन्पाभित्र पारिएको र ज्यो–मो (भिक्षुणी) तथा लामा (भिक्षु) हरूको मुक्तिनाथ मन्दिरसंग रहिआएको सम्बन्ध तथा धार्मिक अधिकारका तथ्यहरूले पनि उपर्युक्त कुरा-लाई पुष्टि गर्दछ । तिब्बती बुद्धधर्म मान्ने स्थानीय

मानिसहरू मुक्तिक्षेत्रलाई फाग्–पा–चेन्–रे–शिग अर्थात् आर्यावलोकितेश्वरको निवास स्थलको रूपमा तीर्थस्थल (न्हे) मान्दछन् र मुक्तिनाथलाई चेन–रे–शिगकै रूपमा। यता हिन्दूहरू पनि विष्णु (नारायण अर्थात् लोकपाल–लोकेश्वर) कै रूपमा मान्ने गर्दछन्। यहाँनिर पहिले स्थानीय बौद्धहरूले लोकेश्वर मानेर पछि हिन्दूहरूले पनि मान्न थाले कि पहिले हिन्दूहरूले विष्णु मानेर स्थानीय बौद्धहरूले लोकेश्वर मान्न थालेका हुन्? यस विषयमा स्पष्ट रूपमा भन्न सक्ने स्थिति छैन। तर ऐतिहासिक स्रोतले र चलिआएको परम्पराले चाहिं पहिले स्थानीय बौद्धहरूले नै मान्ने गरेको कुरा देखिन आएको छ। तर हिन्दू पुराणहरूले भने हिन्दूहरूले नै पहिलेदेखि मानेको कुरालाई संकेत गरेको देखिन्छ। यस प्रसङ्गमा पुराणहरूको रचनाकाललाई पनि ध्यान दिनुपर्ने हुन्छ।

स्कन्दपुराणको रचना कहिले भयो भन्ने विषयमा स्पष्ट रूपमा भन्न नसकिए तापनि त्यहाँ वर्णित विषयवस्तु तथा घटनाको आधारमा धेरै जसो विद्वानहरूले यसको शुरुआत इशाको सातौं शताब्दीदेखि नवौं दशौं शताब्दीसम्म भएको मान्दछन् (सिंह १९८५: पृ. ३४–३७)। यस पुराणको हिमवत्खण्डको रचनाकाल त अझ पछिको जस्तो देखिन्छ। मुक्तिनाथ र गण्डकी माहात्म्य खण्डको रचना त झनै पर्वते मल्ल राजाहरूको शासनकालमा पर्वत राज्यमै भएको मानिन्छ" (नेपाल २०४०: पृ. १३–१४)। वराह पुराणको रचनाकाल पनि इशाको दशौं शताब्दीताका नै मानिन्छ (सिंह १९८५: पृ. ३१–३४)। यसरी उपर्युक्त आधारमा मात्र हाम्रो मुक्तिक्षेत्रको प्राचीनतालाई पूर्व मध्यकालभन्दा अगाडि पुऱ्याउन सक्दैनौं। तर पनि भारतीय भूभागलाई सिंचन गर्ने पवित्र नदीहरू (गंगा, यमुना, गण्डकी, कौशिकी) का स्रोत स्थल हिमवत् प्रदेशलाई हिन्दू तीर्थस्थलको रूपमा चिन्ने चिनाउने काम केही उत्तर वैदिककालदेखि नै हुन थालेको र यस काममा उल्लेखनीय देन गुप्त साम्राज्य युगमा भएको कुरालाई मान्न सकिन्छ। भारतीय मैदानमा मुगल प्रभाव बढ्न थालेपछि विस्तार विस्तार त्यसतर्फका हिन्दू तथा बौद्ध विद्वान् पण्डितहरू साथै शासकहरूको नै पनि हिमालयका काखमा अवस्थित पहाडी प्रदेशतर्फ (खासगरी नेपालतर्फ) प्रवेश भएको कुरा स्पष्ट नै छ। त्यसैले मध्यकालको पूर्वार्द्धदेखि यस हिमवत्खण्डका तीर्थस्थलहरूको ख्याति अझ फैलिन पुग्यो। गण्डकीका सङ्गमस्थलका हरिहर क्षेत्र, रुरु क्षेत्र तथा मुक्तिक्षेत्रमध्ये रुरु क्षेत्र र मुक्तिक्षेत्रको ख्याति फैलाउने काममा पाल्पाली सेन राजा, कर्णाली प्रदेशका खसमल्ल राजा, जुम्ली कल्याल र पर्वते मल्ल राजाहरूको महत्वपूर्ण भूमिका रहेको देखिन्छ। मुक्ति क्षेत्र, गण्डकी, रुरु क्षेत्र साथसाथै बद्रीनाथको ख्याति फैलाउने काममा पनि खसमल्ल राजा र जुम्ली राजाहरूको त्यतिकै देन रहेको देखिन्छ। यसरी मध्यकालको पूर्वार्द्धमा पश्चिम नेपाल तथा दक्षिण पश्चिम तिब्बत (पूर्वमा गुङ–थाङदेखि पश्चिममा मानसरोवर गुगे, पुराङ क्षेत्रसम्म) साथै कुमाउँ गढवाल क्षेत्रसम्म साम्राज्य विस्तार गर्ने या–चे साम्राज्यका खसमल्ल शासकहरूको साम्राज्यभित्र पर्ने बद्रीनाथ क्षेत्र र मुक्ति क्षेत्रको हिन्दूजगतमा महिमा बढाउने काममा अवश्य यी खसमल्ल राजाहरूको प्रथम देन रहेको हुनु पर्दछ।[२] रुरु क्षेत्रमा मुकुन्द सेन आदि पाल्पाली सेन राजाका पालामा सांस्कृतिक महत्वका वस्तुहरूले र पर्वते मल्ल राजाका शासनकालमा लेखिएका कृष्णागण्डकी माहात्म्य, कृष्णप्रभा माहात्म्य, बदरिकाश्रम माहात्म्य

२. या–चे साम्राज्यका संस्थापक नागराज र उनका वंशज तथा पुण्य मल्ल पृथ्वीमल्ल जस्ता पालवंशी राजाहरूले पूर्वमा गोरखा क्षेत्रसम्म कब्ज्याएको कुरा गोरखा तग–व्ही गोन्पामा प्राप्त २ ताम्रपत्रले (खनाल २०३०: पृ. २–९), पश्चिममा कुमाउँ–गढवाल क्षेत्रसम्म कब्ज्याएको कुरा वालेश्वरको क्राचल्लको शिलालेखले र उत्तरमा पश्चिम तिब्बतको गुङ–थाङ देखि गुगे पुराङसम्म कब्ज्याएको कुरा तिब्बती स्रोतले देखाएको छ। यसै गरी पर्वतका राजा शाही मल्लको स्याहा मोहरमा मुक्तिनाथ इलाकालाई "खशान प्रदेश" भनिएबाट पनि मुक्ति क्षेत्रसम्म खसमल्ल राजाहरूको अधिकार फैलिएको कुरा मान्न सकिन्छ। किनकि खसमल्ल राजाहरूले आफ्नो साम्राज्यको राजनीतिक क्षेत्र विभाजन (प्रशासनिक रूपले) गर्दा "जडान" र "खशान" प्रदेश भनेर गरेका थिए।

आदिले पनि ती शासकहरूले यस क्षेत्रको महिमा बढाउने कार्यमा महत्वपूर्ण भूमिका निभाएको कुरा स्पष्ट हुन्छ ।[३]

माथि उल्लिखित कर्णाली प्रदेशका खसमल्ल राजाहरूको या–चे साम्राज्यको पन्धौं शताब्दीको शुरुतिर विखण्डन भएपछि उक्त कर्णाली प्रदेशमा खडा भएको जुम्ला राज्यले मुक्तिनाथ इलाकासम्म आफ्नो अधिकार गरेको थियो । यसले लोबो (मुस्ताङ) राज्यलाई कदर गरेको थियो । कल्यालवंशी यी जुम्ली राजाहरूले आफ्नो इष्ट देवताको रूपमा बद्रीनाथ र मुक्तिनाथलाई ज्यादै उच्च स्थलमा राखेर सम्मान गरेका थिए । यी जुम्ली राजाका स्याहामोहरको शिरोभागमा "श्री बद्रीनाथो जयति । श्री मुक्तिनाथ सहाय" भन्ने लेखिएको पाइनाले यस कुरामा विश्वस्त हुन सकिन्छ ।[४] यी कल्यालवंशी जुम्ली राजाहरू पहिलेका खसमल्ल राजाहरूका सामन्त तथा नजीकका नातेदारहरू पनि थिए । त्यसैले खसमल्ल राजाहरूको प्रभावले जुम्लीहरूले पनि मुक्तिनाथ र बद्रीनाथलाई इष्टदेवता मानेको हुनुपर्दछ । मुक्तिनाथ क्षेत्रमाथि जुम्लीहरूको अधिकार भए तापनि बद्रीनाथ त जुम्लीहरूको राज्यभन्दा धेरै टाढा थियो । त्यसैले बद्रीनाथलाई आफ्नो इष्टदेव बनाउनमा पनि जुम्लीहरूलाई तिनै पहिलेका खस राजाहरूको परम्पराले प्रभावित तुल्याएको हुनु पर्दछ । यसै गरी पर्वते मल्ल राजाहरू त सोझै खसमल्ल राजाहरूकै वंशज भएकोले र आफ्नै राज्य गण्डकी प्रस्रवण क्षेत्रमा फैलिएकोले गण्डकी माहात्म्यको साथै बद्रिकाश्रम माहात्म्य समेत लेखाउने काम गरेका थिए ।

कर्णाली प्रदेशका खसमल्ल राजाहरू हिन्दू र बौद्ध दुवै धर्म मान्दथे र संस्कृत, तिब्बती र खस (पर्वते भाषा हुँदै हिजोआज नेपाली) तीनै थरी भाषाको प्रयोग गर्दथे । त्यसैले तिब्बती बौद्ध परम्परा र हिन्दू परम्परा दुवैको ज्ञान उनीहरूमा हुनाले मुक्तिनाथलाई तिब्बती परम्पराको चेन–रे–शिग (अवलोकितेश्वर) तथा हिन्दू परम्पराको मुक्तिनारायण (विष्णु) दुवै रूपमा मान्यता दिने र पूजा प्रार्थना गर्ने परम्परा पहिले उनीहरूले नै चलाएको हुनुपर्दछ । यसरी मध्यकालभन्दा पहिले मुक्तिनाथको ख्याति हिन्दू जगतमा त्यति फैलिएको थिएन। पछि मात्र क्रमशः पश्चिमका खसमल्ल, जुम्लीकल्याल र पर्वते मल्ल शासकहरूको माध्यमबाट तिब्बतीहरूको साला–मे–वर–छु–ला–मे–वर (चेन–रे–शिग) ले मुक्तिनारायणको रूपमा धेरै ख्याति प्राप्त गरेको बुझिन्छ ।[५] अझ यस देवस्थलको हिन्दू जगत्मा ख्याति शाहकालदेखि बढ्यो । यसो भए तापनि एकीकरण पूर्व मुक्तिनाथको मन्दिर तथा मूर्तिको स्थापना भएको उल्लेख भने पाइएको छ । पहिलेदेखि नै मुक्तिनारायणको रूपमा उक्त स्थलको अग्नि ज्वालासंगैको पवित्र जललाई नै मानिन्थ्यो भन्ने कुरा हिमवत्खण्डमा वर्णित तथ्यका आधारमा माथि नै उल्लेख गरियो । मुक्तिनाथको वर्तमान मन्दिर त शाहकालको हो, त्यसमा सन्देह छैन । तर मुक्तिनारायण–को तामाको मूर्ति भने त्यसभन्दा केही अगाडिकै भन्न सकिन्छ । त्यसैले जुम्ली कल्यालहरूका समयमा मुक्तिनाथको छुट्टै मूर्ति स्थापना गरेर मन्दिर बनाइएको थियो कि भन्ने अनुमान सजिलै हुन्छ । त्यसो भए तापनि पहिलेको मन्दिरकै ठाउँमा पुनः शाहकालमा नयाँ मन्दिर बनेको हुनुपर्दछ ।

३. यस सन्दर्भमा वाल्मिकीय रामायणको रामाश्वमेधकाण्डमा वर्णित नीलगिरि तथा मुक्तिनाथको चतुर्भुज नारायणको चर्चा र तत् सम्बन्धी चाखलाग्दो विवरणलाई पनि भुल्न सकिंदैन । तर उक्त वर्णन पछि थपिएको हो वा मूलमै वर्णित हो भन्ने विषयमा भने विवाद नै छ ।

४. जुम्ली राजा वीरभद्र शाही, शुभ शाह आदिका यस्ता केही स्याहा मोहरहरू यस लेखका अन्वेषकले पनि सङ्कलन गरेको छ र केही परवर्ती अन्वेषकहरूले पनि ।

५. माथि उल्लिखित पर्वते राजा शाही मल्लको स्याहा मोहरमा मुक्तिनाथ जाने जोगी, सन्यासी, ब्राम्हण आदि तीर्थयात्रीलाई आदर गर्नू, अन्न दाउरा दिनू, मिठो कुरा बोल्नू, सहयोग गर्नू .... " भन्ने व्यहोरा परेको छ । यसबाट मुक्तिनाथको ख्याति फैलाउने र तीर्थयात्रीहरूलाई सुविधा पुर्‍याउने काममा पर्वते मल्ल राजाहरूले भूमिका खेलेको थियो भन्ने कुरा बुझिन्छ ।

मुक्तिनाथ...

जसरी मन्दिरको रूप शाहकालमन्दा अगाडिको पाइएको छैन। त्यसै गरी मुक्तिनाथसंग सम्बन्धित गुठी, पाटी–पौवा आदिको पनि ऐतिहासिक प्रमाणले सर्वप्रथम श्री ५ रणबहादुर शाहबाट हालको म्याग्दी जिल्लामा पर्ने राखु क्षेत्रमा मुक्तिनाथ जाने बाटोमा एउटा पौवा बनाउन लगाई फलफूल बगैंचा समेत लगाएर मुक्तिनाथ जाने तीर्थयात्रीहरूलाई फलफूल बाँड्ने र बास बस्ने प्रबन्ध गराएको देखिन्छ (योगी २०२२ : पृ. ६५८)। उक्त घटना वि. सं. १८६२ भन्दा अगाडिको ठहर्छ। त्यसपछि वि. सं. १८६३ मा रणबहादुरकै माहिला महारानी सुवर्णप्रभाबाट मुक्तिनाथको दर्शन समेत गरेर मुक्तिनाथमै एउटा विशाल पौवा बनाउन लगाई राखुमा प्रशस्त जग्गा गुठी समेतको व्यवस्था भएको थियो (वज्राचार्य र श्रेष्ठ २०३७ : पृ. ४२३–२४)। वि. सं. १८६६ मा श्री ५ गीर्वाण युद्धबाट पहिले श्री ५ रणबहादुरबाट स्थापना गराएको पौवा र गुठीलाई विस्तार गरी गुठीको जग्गाको क्षेत्र बढाइएको थियो (योगी २०२२ : पृ. ६५८)। त्यस्तै पछि वि. सं. १८८६ मा पर्वतको कुश्माचौरमा श्री ५ राजेन्द्रबाट मुक्तिनाथ जाने यात्रुहरूका निम्ति एउटा अर्को पौवा र फलफूल बगैंचाको व्यवस्था गराएको थियो। त्यसमा पनि पछि वि. सं. १८९४ सालमा केही जग्गा गुठीको रूपमा श्री ५ राजेन्द्रबाटै थप भएको थियो (श्रेष्ठ २०४२ : पृ. ९०–९१)।

मुक्तिनाथको उपर्युक्त गुठीका गुठीयारको रूपमा श्री ५ रणबहादुरका माहिला महारानी सुवर्णप्रभाका तर्फका राजकुमार चौतरिया रणोध्योत शाह र उनका सन्ततिहरू देखिन्छन्। उनीहरूलाई पछि पछि वसन्तपुर चौतरिया भनिन्थ्यो। उनीहरूबाटै मुक्तिनाथ पौवाका हाकिम डिठ्ठाको नियुक्ति हुन्थ्यो। मुक्तिनाथको गुठीको हर हिसाब उनीहरूकै वसन्तपुर तहविलमा दाखिला हुने व्यवस्था थियो। त्यसैले पाटी–पौवा, धर्मशाला, मन्दिर, बाटो, घाटो, पाठ–पूजा, सदावर्त, गुठी प्रशासन आदि सम्पूर्ण व्यवस्था यिनै वसन्तपुर चौतरियाको निर्देशनमा चल्दथ्यो। चौतरिया वृद्ध पराक्रम शाह, चौतरिया शमशेर जङ्ग पराक्रम शाह, चौतरिया केशरीजङ्ग पराक्रम शाहहरूको नाम मुक्तिनाथको गुठीका सञ्चालक र व्यवस्थापकको रूपमा ऐतिहासिक कागजपत्रमा देखिएको छ। मुक्तिनाथका पौवाका हाकिम डिठ्ठाका रूपमा प्रायः मुस्ताङ झारकोट (बाह्र गाउँ) का ठि–थोग–पा विष्टहरूले काम गरेको तथ्य पनि तात्कालिक चिठ्ठीपत्रहरूबाट पाइएको छ। यसै गरी मुक्तिनाथको गुठी चलाउने काममा वसन्तपुर चौतरिया बाहेक स्थानीय कर्मचारीमा उपल्लापौवामा डिठ्ठा १, पौवाली १, वहिदार १, दाउरे २, हिउँ फाल्ने कामदार १ र १ जना पुजारी ब्राह्मण, १ जना पूजा सुसारे तथा लामा झ्योमोहरू हुन्थे। यस बाहेक तल्लो पौवा (राखुस्थित) बेग्लै प्रशासनको व्यवस्था थियो। १ जना चिताइदार बाहेक अरूको स्पष्ट उल्लेख नपाइए तापनि तल्लो पौवामा मुक्तिनाथ गुठीको राखु अमाल नामक अड्डा नै भएको चर्चा सामग्रीमा परेको छ। तर मुख्य हाकिमचाहिं उपल्ला पौवाका डिठ्ठालाई नै मानिन्थ्यो।

यहाँ मुक्तिनाथ विषयमा अध्ययनका निमित्त अत्यन्त उपयोगी केही अप्रकाशित सामग्रीहरू परिशिष्टमा समावेश गरिएका छन्। जसमध्ये वसन्तपुर चौतरिया केशरीजङ्ग पराक्रम शाहले उपल्लापौवाका नाउँमा वि. सं. १९३१ र वि. सं. १९६० मा जारी गरेको मुक्तिनाथको गुठी व्यवस्था, पाठपूजा परम्परा र सञ्चालन तथा स्याहार संभार आदि विषयमा विस्तृत विवरण प्रस्तुत गर्ने सनदहरू बढी उपयोगी छन्। यिनै पत्रहरू र सनदका आधारमा वि. सं. १९६१ भन्दा पहिले र हिन्दू विधिले मुक्तिनाथको नैमित्यिक पूजा चल्ने परम्परा नभएको तथ्य थाहा पाइएको छ। त्यस्तै उक्त मन्दिरमा त्यसभन्दा पहिले स्थानीय लामा झ्योमोहरूले मात्र आफ्नै परम्पराले बत्ती बाल्ने, पानी चढाउने आदि उपासना गर्ने परम्परा भएको कुराको पनि जानकारी पाइएको छ। त्यसपछि हिन्दू र स्थानीय लामा ज्योमो (बौद्ध) दुवै परम्पराले पूजाआजा गर्ने परम्परा अध्यावधि कायमै छ। यसरी नेपालमा धार्मिक सहिष्णुताको ज्वलन्त नमूना मुक्तिनाथको परम्पराले देखाएको छ।

## सन्दर्भ स्रोत

खनाल, मोहनप्रसाद, २०३९। **मध्यकालीन अभिलेख,** काठमाडौं : लेखक स्वयं।

ज्याक्सन, डेविड वाउल, १९७६। "द अर्लि हिष्ट्री अफ लो" **कन्ट्रिव्यूसन्स् टु नेपलीज स्टडिज,** ४:१, पृ. ३९–५६

टुची, जुसेप, १९५६। **प्रिलिमिनरी स्टडिज अन टु साइन्टिफिक एक्स्पिडिशन इन नेपाल।** रोम : आइ० एस० एम० ई० ओ०।

ढुंगेल, रमेश, २०४२। "दामोदरकुण्ड : एक परिचय" **नेपाली संस्कृति,** २ : १, पृ. १–१२ (सांस्कृतिक संस्थानद्वारा प्रकाशित)।

नेपाल, ज्ञानमणि, २०४०। **नेपाल निरुक्त।** काठमाडौं: नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान।

फ्रांके, ए० एच०, इ. १९७२। **एनुटिक्वीटिज अफ इण्डियन टिवेट।** दिल्ली:एस् चन्द्र एण्ड कं.प्रा.लि.।

बज्राचार्य, धनवज्र र टेकबहादुर श्रेष्ठ, २०३७। **शाहकालका अभिलेख।** काठमाडौं : नेपाल र एशियाली अनुसन्धान केन्द्र, त्रि० वि०।

योगी, नरहरिनाथ, २०१३। **हिमवत्खण्ड** : (सं०)। काशी : गोरक्षटिल्ला, योग प्रचारिणी,

——२०२२। इतिहास प्रकाशमा सन्धिपत्र संग्रह। (सं.) काठमाडौं : गोरक्ष टिल्ला, वनकाली।

श्रेष्ठ, टेकबहादुर, २०४२। **पर्वतराज्यको ऐतिहासिक रूपरेखा।** काठमाडौं : नेपाल र एशियाली अनुसन्धान केन्द्र, त्रि. वि.।

सिंह, नागशरण, ई. १९८५। **पुराणपरिचय।** दिल्ली : नाग पब्लिशर्स।

## परिशिष्ट १

श्री मुक्तिनाथ

१. स्वस्ति श्री मच्चौतरिया वीर वृद्धपराक्रम साहकस्य पत्रम्—
२. आगे. डिठ्ठा घुंग्याल विस्टके असिष उप्रान्त... का सदावर्तको तँले प ठायाको ४
३. सालको वहि वुझ्दा १९०० सालको डंड कुंड वाहेक रापि रसिद गरिदियाको छु अव
४. उप्रान्त वहि बुझाउन पठाउंदा द्वार्‍यालाई पनि पठाउन्या गर. तल्ला पौवा मनी
५. वर्घचा बनाउनु भनि दसषत गरिपठायाको छ. तजवीज वाधि झारा लगाइ चा
६. डो तयार गर. औं छाकीजगाका कुरालाई, २ पल्ट दसषत लेषि डाकी पठाउदा.
७. त पनी आइनस. मोहडा पनी पठाइनस् जगा लिनाको मन्सुवा नराषि. अर्जि लेषि
८. पठाइछस तँपनि पुरानु चाकर होस आउलास भनि जेठ महिनासम्म जगा रा
९. षि दियाको थियो. त आइनस् वहि वुझाउन आउन्या तेरा मानीस हेरुसित अ
१०. रुले दिया वमोजिमको मोहडा दिन सक्छौकी भन्दा. अरुले दियाको वमोजि त
११. हामी दिन सक्तौन हामिले ल्यायाको छैन भन्न्या जवाफ दिया र. जगा उठयो
१२. तेसतर्फ अरूकाम परि आयो भन्या त हाम्रो छदैछस् ईती सम्वत् १९०१ साल मि
१३. ति जेष्ट शुदी ८ रोज ७ शुभम्—

१) टशि विष्ट वा सुब्बा टशि थोवग्याल विष्ट
स्रोत: से– आंग्याल, कागवेणी

## परिशिष्ट २

श्री

श्री मुक्तिनाथ

१. स्वस्ति श्री मच्चौतरिया सम्सेरजङ्ग साहकस्य पत्रम्—
२. आगे वेल्वो विष्टको आसिक् उप्रान्त तँले वावा टशि विष्ट र दा
३. ज्यू स्मेत यसै सालमा मर्दा वावा र दाज्यूको काज क्रया वार्षिक हुना
४. ले. मलाई साहै दुष पर्‍यो र यो साल हजुरको दर्शन गर्न आउ
५. न सकिन. मेरा वावाले गर्‍याको ...... का सदावर्तको आम्दा
६. नी षर्च वसिल वांकिको वहि पत्र लि. आगे सालमा असल घो

७. डा स्मेत् ली वहि वुझाउन आउछु भन्न्या विस्तार लेषि पठा

८. याका अर्थलाई वढिया लेषिछस् तेरो वावु टसि विष्ट र चुं

९. वा छरि विष्टले...... का सदावर्तको दामकाम् आम्दानी ष

१०. र्च गन्याको १७ साल लगायत् २६ साल तकको ज्मा खर्च फार

११. क् भयाको छैन. सो माफिक सालवसालको वहिपत्र र वाकी

१२. तैले तिर्नु पन्र्या ठहन्याको रूपैया स्मेत् लि. आगे साल मंसिर

१३. मा असल तेजि दोषन भयाको वलियो देषनलाई राम्रो मो

१४. टे घोडा १ र. सक्या सम्म ४ र नभया १।२ जो पाइन्छ

१५. ७।८ वर्ष माथी १२।१३ वर्ष सम्म उमेर भयाका देष्न ला

१६. इ राम्रा केटी कमारि. पोजि षरिद गरि. लि आउन्या काम गरि

१७. स् भन्या त देषि म वहुत षुसि हुन्याछु चाकर किन्दा पन्याको मो

१८. ल् तसित वहि वुझ्दा मिनाह गरि वक्स्यौंला. आगे सालमा पनि

१९. वहि वुझाउन आइनस्. वाकिरुपैया पनि तिरिनत् भन्या नु

२०. ठी पनी षोसियेला वाकी रुपैयामा पनि तेरो विइजत गरि

२१. घडि लिइन्या छ सो वुझि लेषिया वमोजिम्को काम गरि आ

२२. गे साल चाडो आउन्या कामगरिस भन्या तेरो वावु ले गन्या

२३. को काम तलाइ छदैछ आउन्या काम गर इति सम्वत्

२४. १९२६ साल मिती फागुन शुदि ४ रोज १ शुभम्—

स्रतः से— छिमि दोर्जे झारकोटो, मुक्तिनाथ

**परिशिष्ट ३**

श्री केश  श्री
रीजङ्ग पराक  श्री मुक्तिनाथ
म शाहको  १
छाप

१. स्वस्ति श्री मच्चौतरीया के(शरीजङ्ग पराक) म साह कस्य पत्रम्—

२. आगे १ का उपल्ला पौवाको गुठियार. डिठा वेलवु विष्टके यथोचित उंप्रा

३. न्त. हाम्रा विर्ता. टुक्च्या गुंवामा ज्ञान लि टुपि काटि. झिस्याभै वस्याकी झु

४. म्यालाई. टुक्च्या वस्न्या. सिपालु तन्जिन् षम्वाको छोरा. ल्हाक्पा. भंन्या

५. ले. निज झुंस्या पानि लीन. पध्यारामा गयाकीलाई पध्यारैवाट टिपि

६. लगी. स्वास्नी तुल्याई. राषेछ र. हाम्रा रितमा पुग्याको झुमालाई. तिमिले

७. स्वास्नि तुल्यायापछि. हाम्रा गुंवाका लालमोहर. वमोजि तिमिलाई. डंड ला

८. ग्छ भनि. हामिले. निज ल्हाक्पालाई. तगैदा वर्दा. तिर्दिन भनि. जवरजस्ति

९. झेल गरि. डंडका रुपैञा दियेन. गुंवालाई गरि-वक्स्याको लालमोहरको

१०. रित विगारि दियो. झेमु विगान्र्या सित. डंडलीन पाउन्या हुं भनि. टुक्च्या

११. गुम्वाको लामा निल्द घ्यालपो र डीठ्ठा झेम्यां छोमो. ले. षरिदार धर्मदत्त उ

१२. पाध्यालाई लेष्याका चिठिले. हाम्रा हजुर्मा जाहेर. भयो तनर्थ वे

१३. होरा येहि. हो भन्या. ज्ञान ली टुपि काढि गुंवामा वसि सक्याकि. (झुमा)

१४. विगान्र्या निज ल्हाक्पालाई पकि. गुंवाका लाल-मोहर. वमोजि. को थि

१५. ति. थामि अयन्. वमोजिको. डंड लि. निज गुंवाका लामा र. डीठ्ठा. झेम्यां.

१६. छिमो. हस्ते. वुझाइ. भर्पाइ. लीनु. वेहोरा अर्कै रहेछ भन्या. निज लामा र डि

१७. ठा. झेम्यां छोमो. र निज. ल्हाक्पा. झिम्स्या. लाई. झिकि पुर्पक्षे. जोरि. अ
१८. यन. वमोजि. निसाफ. गरि. यो झगडा छिनिदे. ताहा छिन्न. सकिदैन.
१९. भन्या. २ थर. झगरि.या. जोरि. जाहा पठाइदे. अ.य . वमोजी. झगडा छि
२०. नि जानन्. ताहा पनि. छिनिदिनस्. ज्याहां पनि. जोरि पठा. इनस्. भ.
२१. न्या र. पनपक्षे. माया मोलाजा पछि. लागी. निसाफ विगारि. छिन्या
२२. को ठहऱ्यो भन्या. हाम्रा. विर्ता गुंवाको. झगडाले, अयन्. वमोजि. तैले.
२३. वुझाउनु पर्ला. सो वुझि निसाफ. राहापारि. झगडा छिनिदे. इति सम्वत् १९३७
२४. मिति पौष शुदि ११ रोज ३ शुमम्—
नाप: ३६×२१.२ से. मी.
स्रोत: से–छिमि दोर्जे, मुक्तिनाथ, झार्कोट ।

**परिशिष्ट ४**

| | | | |
|---|---|---|---|
| श्री केश री जङ्ग परा क्रम शाहको छाप | श्री मुक्तिनाथ १ | श्री नृसिंह २ | श्री ज्वालाजी ३ |

१. स्वस्ति श्री मच्चौतरिया केशरी जङ्ग पराक्रम साह कस्य पत्रम्—
२. आगे ···१···का सदावर्त गुठी उपल्ला पौवाका डीठा के यथोचित् उप्रान्त १ को नित्य पुजा
३. गर्नालाइ पुजाहारी राषि नित्य पुजा गर्नु भंन्या अघी नठेकियाको र. जो कोही मंदीर भीत्र
४. पसि फोहर गर्न्या तिर्थ वासिहरूले चह्रायाको भेटी घाटी भने लामा झुमाहरूले षान्या
५. सुघर सफा भने नगर्ने हुंदा अब उप्रान्त वन्देज रहोस् भंन्ना नीमित्त हाल ६१ साल राम नौ
६. मी देषी १ को नित्य पुजालाइ र. सोपुजाको भाडाहरू स्मेत् संकल्प गरि हामि वाट राषि
७. वक्स्याको छ हीमालको ठाउ हुनाले राम नौमि चैत्र सुदि ९ देषि कार्तिक सुदि १५ तक
८. मैह्ना ७ दिन ७ लाइ तपसिल्मा लेषीया वमोजीम्-को पुजा सराजाम् वाट नीत्य पु
९. जा चलाउनु. चौमास पाठ गरेको साविक वमोजिम् को दक्षीणा र पुजाहारी टहलु
१०. वा को सिधा जागीर पाषी दोचा वषु धोति को नगदि स्मेत् सनद वमोजीम् तपसिल् मा
११. लेषीयाको नगद जिन्सी साल वसाल वेला वषत्मा उपल्ला पौवा. को डिठा संग वुझी लि
१२. नीत्य पुजा चलाइ १ साविक वमोजिम् चौमास पाठ गरि षानु षुवाउनु. सो नित्य पु
१३. जा. को. भाँडा वुझी लिदा वुझाउदा र भेटी घाटी गहना भाँडा माल मत्ता. साछी वस्ने कुरा स्मे
१४. त् चाहीने तपसिल्मा लेषी वक्स्याको छ सो लेषीया वमोजिम् गर्न्या काम गर
१५. भनि वागलु वस्न्या पंडीत हरिप्रसाद पाध्याय का नाउमा हामी वाट दस्षत् गरि वक्स्या
१६. को छ. तपसिलमा लेषीया वमोजिम्को पुजा सरा-जाम्. चौमास पाठ गरेको साविक
१७. वमोजिम्को दक्षिणा पुजाहारि टहलुवा को सिधा जागीर पाषी दोचा वषु धोति
१८. को नगदि स्मेत् साल वसाल् १ का उपल्ला पौवा का आम्दानि वाट नीज पुजा हा
१९. री लाइ मैन्हा मैन्हा मा र. वेला वषत् मा दि भर्पाइ लीनु वही वुझदा निजका भर्पाइ र
२०. यही दस्षत् वमोजिम् मीन्हा होला नित्य पुजा को भाडा. भेटी घाटी गहना भाडा माल्
२१. मत्ता. साछी वस्ने कुरा स्मेत् गैह्र तपसिलमा लेषीया वमोजिम् कत्तीफरक नपा
२२. री गर्नु. गर्न लाउनु. लेषीया वमोजिम् नगरि लो भानि पापानि गरि पाया षुदा
२३. या को र. पुजा वंदीन गरेको स्मेत् ठहऱ्यो भन्या अैन वमोजिम् सजाये भै काम वा
२४. ट स्मेत तुरंत षारेज हुनेछ. सो जानी लेषीया वमोजिम् गर्ने गराउने काम गर

तपसिल

२५. ···१··· का स्थानमा हीमालयेको ठाउ हीउद भर ज्यादा हयू पर्ने हुनाले
२६. रामनौमी देषी पुजा चलाइ मार्ग वदि १ देषी वन्द

गर्नु पर्ने हुनाले य

२७. ही साल चैत्र सुदि ९ देषि कार्तिक सुदि १५ तक मैन्हा ७ दिन ७ को नीत्य

२८. पुजालाइ चाहीने पुजा सराजाम् र चौमास पाठ गरेको पाठको साविक

२९. वमोजिम् को दक्षिणा र पुजाहारि टलुवा को सिधा जागीर वषु दोंचा पा

३०. षी धोति को मोल. स्मेत साल वसाल गंन्ती गन्र्या गंती गरि भन्र्या भरि जोषन्या जो

३१. षी पुजाहारि लाइ वुझाइ भर्पाइ ली नीत्य पुजा चलाउन लाउनु—

३२. सो मैन्हा ७ दिन ७ को ···१··· मा नीत्य पुजा आरती के—

| ३३. आसामी | रोज १ को | मैन्हा १ का दिन ३० को | मैन्हा ७ दिन ७ को ज्मा दिन २१७ के— |
|---|---|---|---|
| नगदी मोरु | | | |
| ३४. श्री षंड के | ।.।३— | ।२२।२— | १।६२।३ |
| ३५. सिधुर के | ।.।३— | ।२२।२— | १।६२।३ |
| ३७. सिंगो सुपारि के | ।.।१— | ।७।२— | ।५४।१ |
| ३७. अविर के | ।.।२— | ।१५— | १।८।२ |
| ३८. कपुर के | ।.।२— | ।१५— | १।८।२ |
| ३९. आरति स्मेत के | | | |
| घ्यू वत्ति के | ।३— | ।९०— | ६।५१ |
| ४०. फुल के | ।२— | ।६०— | ४।३४ |
| ४१. भेटी के | ।१— | ।३०— | २।१७ |
| ४२. अष्ट सुगंध धुलो धुप | | | |
| ४३. र घ्यू स्मेत के | ।१— | ।३०— | २।१७ |
| ४४. वेलुका आरति स्मेत् के नै | | | |
| ४५. वेद के | ।३— | ।९०— | ६।५१ |
| ४६. जौ तिल् के | ।.।२— | ।१५— | १।८२ |
| ४७. दियो के वत्ति के | ।१— | ।३०— | २।१७ |
| ४८. पंचामृत के | ।२— | ।६०— | ४।३४ |
| ४९. झमाल वगामरके | ×— | ×— | ।४० |
| | ।१६।१ | ४।८७।२ | ३५।६६।१ |

जीन्सी

| | | | |
|---|---|---|---|
| ५०. अक्षताके चावल | ।.।.।२— | ।.।६— | ।५।३।४ |

५१. नीत्य पुजा र चौमास भर पाठ गर्ने व्राम्हण १ के—

५२. नगदि मोहरु— ७८।६६

५३. मंदीरमा चौमास पाठ् गरेको पाठको द

५४. क्षीणा सात्विक वमोजिम् पैसा २० गंदी

५५. रु ४२ के २५ गंदीले मोरु— ३३।६६

५६. वषु दोचा पाषि के साविक चौमास

५७. पाठ् गर्दा दीयाको मोरु ३ मा हाल नी

५८. त्य पुजा पुजदा ठप् (थप) नोरु ५ स्मेत ज्मा ८।

५९. सो नीत्य पुजा गर्दा लाउनाके धोती २ के २।

६०. मैन्हा ७ दिन ७ सम्म पुजा गन्र्याको जागीर ३५।

---

६१. सिधा साविक चौमास पाठ् गर्दा मैन्हा ४ को दि

६२. आयाको मा हाल मैन्हा ७ दिन ७ सम्म नीत्य पुजा

६३. थपिदा ठप् (थप) मैन्हा ३ दिन ७ स्मेत ज्मा मैन्हा ७ दिन

६४. ७ को जोगी सरह रोजको चावल ।.।२ मास ।.।.।५ नुन्

६५. दिन २० को ।.।१ वेसार दिन ३० को ।.।१ घ्यू रोजको

६६. तोला २ दारुवा चाहीने माफिकका दरले दिनु

---

६७. पुजा सुसारे जना १ के ऐ मैन्हा ७ दिन ७ को पुजा हारिलाई दिया

६८. वमोजिम् सिधा सराजाम दिनु—

---

६९. सो मैन्हा ७ दिन ७ सम्म नीत्य पुजा गरिज्याल सम्म लाइ कसैलाई छुन नदि

७०. नीत्य पुजा गर्न लाउनु. नित्य पुजा सिधीया पछि चोषो नीती भै आयाका लाइ

७१. ···१··· को पाउना डंडवट् गर्न दिनु. अछुति जात् लाइ र. पर सरेकि स्वास्नी मा

७२. नीसलाई मंदीर भीत्र पसन नदिनु—

७३. ···१··· को दर्सन गर्न आउने छोटा वडा गैह्रले सो मैन्हा ७ दिन ७ सम्म मा चह्रा

७४. याको भेटी घाटी गहना भाडा माल मत्ता हरू गैह्र मध्ये गहना भाडा माल्

७५. मत्ता हरू जति ···१··· का जगेरा ढुकुटी दाषिल् गर्न पौवाका डीठा जीम्मा

७६. वुझाइ भर्पाइ लीनु. भेटी घाटी जति अघी पुजाहारि नहुदा परा पुर्व देषी

७७. २ षंड लामा ले र १ षंड झुमा हरूले षाइ आयाकोमा हाल पुजाहारि रहेको

७८. हुनाले सो लामाले षाने २ षंड मध्ये १ षंड झिकि पुजाहारि लाइ वक्स्याको छ. अव

७९. उप्रान्त ···१··· मा चह्रायाको भेटी घाटी जति हुंछ नस्को ३ षंड को १ षंड झुमा हरू ला

८०. इ र १ षंड लामालाइ दि वाकि १ षंड पुजाहारिले षानु. सो भेटी घाटी हरू वा

८१. इदा. लामा झुमा पौवा को डीठा राषी वाड्नु. नीज पुजाहारीले पुजा नगर्‍याका

८२. मैन्हाको भेटी घाटी. साविक मा झुमा हरूले १ षंड मात्र षाइ मंदीर मंदीरमा

८३. परेको हिउ वरावर फालनु पर्ने हुनाले थप् १ षंड स्मेत् ज्मा २ षंड झुमाहरू

८४. ले र १ षंड लामाले षानु. सो पुजाहारीले पुजा नगर्‍याका मैन्हामा चह्राउन ल्याया

८५. को गहना भाडा माल मत्ता हरू गैह्र सोही ···१··· को जगेरा ढुकुटी दाषिल गर्न पौवा का डीठा जिम्मा लामा झुमाहरूले वुझाइ भर्पाइ लीनु सो लेषीया वमोजिम् का भाडा गहना माल मत्ताहरू नवुझाइ दवाइ षायाको थहर्‍यो भन्या जसले

८६. दवाइ षायाको छ उसलाइ अैन् वमोजिम् सजाये होला भनि र ·· २३ ·· को

८७. साविक दरि चलि आया वमोजिम् पुजा आजा गरि ताहाको भेटी घाटी तिमि ला

८८. मा झुमा हरूले साविक षाइ आया वमोजिम् गरि वाडी षानु भनि नीज पुजा

८९. हारि र. लामा झुमा हरूका नाउमा स्मेत् हामी वाट गरि वक्स्याका दस्षत् मा लेषी

९०. वक्स्याको छ सो माथी लेषीञा वमोजिम् गर्नु. गर्न लाउने काम गर्नु—

९१. ·· १ को दर्सन गर्न आउने जात्रु तीर्थ वासिहरू षुसि राजीले हामी दान द

९२. क्षीणा पाठ पुजा पुराण जय होम् तिर्थ श्राद्ध गर्छु मन्यो भन्या वि

९३. धि पुर्वक निज पुजाहारि वाट गराइ दिनु. र श्रद्धा-वाट जो दियाको दान

९४. दक्षीणा लीन लाउनु. कर लगाउन. नदिनु—

९५. ताहा सदावर्त वाड्दा निज पुजाहारि लाई साछि राषी वाड्नु रोजना मा

९६. सो सिधा वाडेका तिपच स्याहामा मिति मितिमा निज पुजा हारिको सा

९७. छीको सही छाप गराउनु. नीज पुजा हारिले पुजा नगर्‍याका मैन्हा को सावीक व

९८. मोजिम् पौवालि को मात्र सही छाप गराउनु ·· १ ·· को गहना भाडा माल्

९९. मत्ता हरू नायेदाम गर्दामा पनि नीज पुजाहारि लाइ साछी राषी दायेदा

१००. दाम गर्नु—

१०१. सो नित्य पुजाके हामि वाट संकल्प गरि राषि वक्स्याको देहायका भा

१०२. डाहरू ··· १ ·· का पुजाहारि जीम्मा वुझाइ भर्पाइ लिनु सो मैन्हा ७ दिन ७

१०३. सम्म नित्य पुजा चलाइ सके पछि नीज पुजाहारि संग सावुद फिर्ता

१०४. वुझि लि भर्पाइ दिनु—

| | | | |
|---|---|---|---|
| १०५. ढलौटे नैवेद पात्र— | १ | तृगुढी स्मेतको अर्घा— | १ |
| १०६. ऐं पंच पात्र— | २ | ऐं स्मेतको संष— | १ |
| १०७. ऐं आचमनि— | १ | ढलौटे धुपौरो— | १ |
| १०८. ऐं ठाडो दियो— | १ | | |
| १०९. ऐं २मुखे चंदनघोरी | १ | नीरमल थापने पितलेवाटा | १ |
| ११०. ऐं घंट— | १ | वजाउने संष— | १ |
| १११. ऐं कलस— | १ | तावाको गागरि— | १ |
| ११२. ऐं ५ मुषे आरति— | १ | अैना ठुलो— | १ |
| ११३. ऐं पंचामृत के कचौरा— | १ | तावाका डाठ् स्मेत्को मजुर पंषा— | १ |
| ११४. ऐं को नौ प्वालको पुजा थालि— | १ | ऐं स्मेतको जवर पंषा— | १ |

११५. ढोकामा लाउने नेपाली फला

११६. मे तालचा जोर— १ × × ×

११७. ... १ ... को नीत्य पुजा गर्दा वेहान वेलुकाको आरति के र दियो के स्मेत् घ्यू वत्ति

११८. के हामि वाट ठेकी वक्स्याको रोजको पैरु ।४ को सो उपल्ला पौवा को सदा

११९. वर्त लाइ दोवा गाउवाट आउने घ्यूले नपुगी षरिद गर्नु पर्दा मोरु १ को धार्नि

१२०. १९ का दर ले षरिद गरि काम चलाइ आयाको हुनाले अव पनि सो पैरु ।४

१२१. को दोवा गाउका मुषीया चौतारे हरू संग मोरु १ को धार्नि १ का दरले घ्यू

१२२. नै षरिद गरि मैन्हा मैन्हामा पुजाहारि लाइ वुझाइ दिनु. नगदि नदीनु

१२३. ... १ ... प्रिति गरि हामि वाट चढाइ वक्स्याको देहायका सैया सराजाम हरू

१२४. नीत्य वेलुका को आरति सिधीया पछि दुरुस्त गरि माजी ... १ ... को अगा

१२५. डी राषना लाइ नीज पुजाहारि जीम्मा वुझाइ दिनु—

| | |
|---|---|
| १२६. काठको छपर स्मेत्को पलङ— | १ |
| १२७. षोल स्मेत् को दसना— | १ |
| १२८. षोल स्मेत्को र जाइ— | १ |
| १२९. षोल स्मेत् को तकीया— | १ |
| १३०. झलर स्मेत को सुल— | १ |

१३१. इति सम्वत १९६१ साल चैत्र ११ गते ५ सुभम्

(३गोटा टुक्रा जोडिएको) संग्रह: छिमिघोर्जे

नाप:— ५६×२१.२ (से.मी.) विष्ट ठकुरी

**परिशिष्ट ५**

श्री

१. विन्ती पत्र चढाउंन्याको

नाम. सु कागज नंवर- ७११६८५५

२. वा लक्ष्मी प्रसाद तोक नंवर

३. ठेगाना इलाका वागलु झा झर

४. कोट. गाउँ——

विन्ती पत्र

५. स्वप्रान्त महाराज करुणा निधान् धर्म औतार प्रभू.

श्री
लक्ष्मी प्र
साद बीज

सकल् बमोजिम् नकल् दुरुस्त छ भनी सही छाप गर्ने ईलाका वागलु झारकोट गाउं वस्न्या सुवा लक्ष्मी प्रसाद बीहा——

सर्कारवाट दामोदर कुंडमा १ नरसीं

६. षोलामा १ मुषचे षोलामा १ जंमा धर्मसाला ३ वनाई तयार गर्न भंन्या थाक.

७. दान् मंसारका सुवा मंन् लाल् गुरु .लाई आडर भया मुतावीक. नीज सुवाले सो

८. तिन् थाउंमा धर्मसाला वनाई तयार गरी सके पछी. सो धर्मसालाको चिताई दारी

९. काम्मा नीज सुवा मन्लाल् गुरु ले. षमजु सुवा-लाई र मेरो दाज्यू वषतवाहादुर सुवा

१०. लाई नियेत् गरी. दिंदा हाल मेरो दाज्यू वषत वाहादुर सुवा र षमजु सुवा स्मेत पर्लोग संग

११. यातापनि. मेरो दाज्यू सुवा वषतवाहादुर सुवा षमजु हरूले जुन् हीसाव संग. सो धर्म

१२. सालाको हीफाजत् गरी आयाको थीयो. सो वमो-जिम् गरी हिफाजत्. गरी आज संम

१३. सो धर्मसालामा केही नोक्सान् नभयाकोमा. हाल झार्लकोट्. वस्न्या ज्यान्यां भन्याले

१४. सर्कारमा आई. सो धर्म सालको हिफाजत् गर्न कसैले गरेन भंन्या ईत्यादीको व्यहोराको झुठाकु.

१५. रा सर्कारमा विन्ती पारी उसो भया सो धर्मसाला तिनैं ठाउंको चिताईदारी तिमी भैस.

१६. भंन्या वेहोराको तोक गरायछ भंन्या समाचारमा. सर्कारमा झिजो विन्ती चढाउंनु आया

१७. को छु प्रभू. सो तिनै वटा धर्मसाला. सावुद रहेछ र सावीक् चीताईदार षमजु सुवा.

१८. वषतवाहादुर सुवाको भाई छोराहरू. ले हेर विचार गरेको रहेछ भंन्या. ज्यान्यांको विन्ती

१९. पत्र वातिल् गरी. सो धर्म सालाको चिताइदारी काम् सावीक् चिताइदारको भाई छोरा

२०. हरूलाई. सो चीताईदारी काम् को षान्गी वान्गी थामी दिनु भंन्या. दान् मंन्सारको

२१. नाउंमा सनद गरी. पठाइदिनु भंन्या जैसी कोठा अडार. को नाउंमा प्रमान्गी गरी वक्सु

२२. प्रभू जो हुकु—

इति सदा सेवक ईलाका वाग्लु झारकोट् गाउं वस्न्या लक्ष्मी प्रसाद सुवाको दिनप्रती कुर्नेस् कुर्नेस्—

इती सम्वत. १९७० साल फागुण गते शुभम्—

**परिशिष्ट ६**

श्री

श्री मुक्तीनाथ

१

१. स्वस्ति श्रीमच्चौतरिया केसरिजं पराक्रम साहकस्य पत्रम्—
२. आगे डीठा भु गेल वीष्ट मर्दा नीजको वारेसभै काम गर्ने श्याम्या वीष्टके यथो
३. चीत उप्रान्त ⋯१⋯ का उपल्ला पौवाका सदावर्त गुठीको अमानत् काम ७१ सा
४. लका वालीलाई तलाई षारेजगरी झारकोट गाउ वस्न्या लक्ष्मीप्रसाद
५. वीष्टलाई भर्ना गरी वक्स्याको छ ⋯१⋯ का सदावर्त गुठीको उपल्ला पौवा
६. को तँले बुझाउनु पर्ने सो पौवामा दरीयाको दोवा गाउ १ को लागत् र सदा
७. वर्त चलाउनाके सावीक दी आया वमोजीम्को नगद् जीन्सी कागज पत्र
८. भाडा वर्तन स्मेत् जो जो छ गँह्ल नीज लक्ष्मीप्रसाद वीष्टलाई वुझाइ
९. भर्पाइ लीन्या काम गर. इती सम्वत् १९७० साल चैत्र ७ गते ६—
१०. शुभम्  छाप  छाप

**परिशिष्ट ७**

श्री मुक्तिनाथ १ श्री लक्ष्मी नारायण २

१. स्वस्ति श्री म.च्चौतरिया केसरि जङ्ग पराक्रम साह कस्य पत्रम् —
२. आगे झारकोट गाउ वस्न्या लक्ष्मी प्रसाद वीष्ट के. हाम्रा सर्वाङ्ग माफीक् वीत्तलप १ ⋯ प्रीती गरी सदावर्त
३. नीमीत्त गुठी राषी वक्स्याको ⋯ १ ⋯ का उपल्ला पौवामा दरियाको दोवा गाउ १ को कामकाज गर्ने
४. साविकवाला अंगेल दिष्ट मर्दा नीजको वारेस भै काम गर्ने नीजका भाई श्याम्या वीष्टलाई
५. षारेज गरी नीजको वदलामा तलाई भर्ना गरी वक्स्याको छ ⋯१⋯ का उपल्ला पौवाको इस्तक
६. सम्वत् १९७१ साल वैसाष १ गतें देषी चैत्रका मसान्ततक् वर्ष १ का वालीलाई अमानत वमोजी
७. म्को पट्टा गरी वक्स्यौं जगामागै रस्ती चलाई वस्ती वसाई गाउघर अवाद गुल्जार गरी रैती
८. राषी उपल्ला पौवामा दरीयाको दोवा गाउं १ को लगायात् स्मेत्को सेर्मा साउन्या फागुपा
९. को गँह्ल रकम् कलम् वीह्लौटा वीह्लौटी षेत्को वाली स्मेत् ५१ सालका जाँचको रषो (ट)
१०. वढेको वढ भया वढ् स्मेत्को सावीकवालासँग लगत ली सो लगत वमोजीम् सावीक दे
११. षी दरि चली आया वमोजिम् असुल तहसील गरी आम्दानी डंड कुंड मर्न्यो अपुताली चा
१२. क चकुई ठेकी मेटी स्मेत् गँह्ल अमानती तहसील गरी स्याहा दर्नु तल्ला पौवावाट आया
१३. को जीन्सी गँह्ल वुझी ली रसीद गरी दीनु सो वुझी लीयाका जीन्सी आम्दानी वाधनु अस्मानी
१४. डंड कुंड गर्दा ग्रैन वमोजिम गर्नु ग्रैनमा वीत्यास् पारी. वेजाइ वीदुत् नगर्नु वेजाइ वीदु
१५. त् गर्न्या भनी कोही रैती दुनीयाहरू कराउन आयो भन्या र. ग्रैनमा वीत्यास पारि काम
१६. गरेको ठहर्‍यो भन्या तँले गरेको वजाई वीदुत् त आफैले वुझाउनु पर्ला तँले......
१७. अस्मानी डंड कुंड मध्ये ६ षन्डको ५ षन्ड स्याहा दर्नु १ षन्ड तँले खानु सावीक् वाला
१८. अमालीहरूले रकं कलं दवाई छपाई राष्येको रहेछ भन्या पनी षोजी लगत् कसी हा
१९. म्रा हजुरमा जाहेर गरी पठाउनु औ ⋯१⋯ को दर्सन गर्न आउन्या जोगी सन्यासी फकीर
२०. फकेरा तीर्थवासी गरीप जो कोही जात्रुहरूलाई दान पत्रमा दरीया वमोजीमको... ...
२१. ल वमोजीमका दर्ले सदावर्त षान्छु भन्या जात्रु गँह्ल-लाई सदावर्त वार्दा ⋯१⋯ का नी

२२. त्ये पुजा गर्न्या पुजाहारी ब्राम्हणलाई र …१…को उपल्ला पौवाली लाई स्मेत् (साछी)
२३. राषी रोज रोज आयाका सीधा षाने येती येती जवान भन्या नीज साछीहरूको
२४. सही छाप गराई राषनु साछीको स्ही छाप नपर्‍याको सीधा षर्च लेषेकोमा पछि मीन्हा
२५. पाउने छैन उपल्ला पौवाको कामदार कारीन्दालाई तपसीलमा लेषीया वमोजिम्
२६. को जागीर सीधा समेत् दी भर्पाई गरी लीनु तलाइ वक्स्याको तपसील वमोजीम्को
२७. षांगी तले षानु तपसीलमा लेषीया वमोजीम्को षर्च गरी वाकी रहयाको जीन्सी
२८. वीक्री गरी स्याहा दर्नु सो वाकी रहयाको जीन्सी विक्री गर्दा गाउका मुषीया भलाद्मी
२९. साछी राषी गाउ षोलामा चलेका दर्माउमा सो साछी वस्ने मानिसहरूको मुचुल्का
३०. गराइ मुचुल्का वमोजीम विक्री गरी नगदी स्याहा दर्नु सदावर्तलाई चाहीन्या (जीं)
३१. सी षरीद गर्दा जु जु मैंन्हामा जे जे माल किफायत् साथ पाइन्छ उमैं उसैं वषत्मा षरी
३२. द् गर्नु सो षरीद गर्दा पनी गाउका तालुकदार भलादमी पौवाली पुजाहारी सा
३३. छी राषी नीजहरूको मुचुलका गराइ लीं सो मुचुलका वमोजीम् षरीद गर्नु सो नग
३४. री षरीद गरीस् भन्ये मीन्हा पाउने छैन साल १ को असल काठे न्याउरी मुसा २ अस
३५. ल. चोथो ठुलो कस्तुरी विनायक् सलामी चढाउनु सो न्याउरी मुसा र कस्तुरी वीनायक् चढाउ
३६. नु. सकीनस् भन्य न्याउरी मुसा २ के दर मोहर रू १०। ले मोहरु २०।र. कस्तुरी विनायक
३७. के मोहरू २५। स्मेत् नगदी वुझाउनु सो सदावर्त बाँडेकौ रोज रोजको आम्दानी वाँदको
३८. रोज रोजको ठाडो स्याहा लेषी सीधा पाने जोगी संन्यासी गैंह्र जात्रुको नाउ नमैसी समे–
३९. तको छुट्टा–छुट्टै हाजीर फर्द लेषी सोही हाजीरी फर्दका मीती मीतीमा पौवाली पुजाहा
४०. रीको स्ही छाप गराउनु साल आषीर भयापछि आम्दानी षर्चको स्याहा ढपोड् षडा गरी
४१. साल तमाम भयाँका ४ मैंन्हा भीत्र हाम्रा वहि जुन्ने अड्डामा दाषील गरी वही वुझाई
४२. फारषती लीनु साल. तमाम्.का ४ मैन्हा भीत्र स्याहा धपोड तयार गरी दाषील गरे
४३. न भन्या ग्रैन वमोजीम् वुझाउनु पर्ला सो सदावर्तमा षर्च गरी वाकी रहेको .. ... सा
४४. छी भयेतापनी जगेरा चैत्र मैंन्हामैं वुझाउनु पट्टामा लेषीया वाहेक नगरी नहुन्या (काममा)
४५. गर्नु पर्‍यो भन्या हाम्रा हजुरमा साधी जवाफ वक्स्या वमोजीम् गर्नु हाम्रा हजुर सा-
४६. धी पट्टामा लेषीया भंन्दा वढी षर्च गरेकोमा मीन्हा पाउने छैन पौवा देवधारा भत्के
४७. वीग्रेकोमा मनासीव माफीकको षर्च लगाई गाउका तालुकदार भलाद्मी पौवा
४८. ली पुजाहारी स्मेत् साछी राषी मात्र वनाउनु सो साछी वसनेको र लीलाम.........
४९. छाप पर्‍याको कागज वमोजीम् मीन्हा होला पैवा सफा सुघर राषनु.........
५०. का सवैं सावुद वनाइ राषनु हर्साल छानामा पानी नचुहुने गरी साल वसाल
५१. छापनु सो पौवामा मर्मत नगरी पानी चुहीयो भन्ये पौवालीको जागीर मीन्हा
५२. पाउँदैन पैवामा घोडा गधा कुषुरा केही राषन नदीनु लोभानी पापानी गरी ध
५३. र्म नस्त गरी नषानु सो नाफा षायाको ठहर्‍यो भन्या ग्रैन वमोजीम् सजाय भै काम् वाट
५४. स्मेत् षारेज गरी वक्सौंला औ …१… का तुकुचे गुम्वाको स्मेत् २ गुम्बाको धंमाल आसा
५५. मी जगा जमीन सनद कागज पत्र भाडा वर्तन् स्मेत् गैंह्र मेरा जीम्माको यत्तीकैं हो यो
५६. देषी घती वढी अरू मसीत केही छैन हालवालालाई नवुझाइ दवाई राषेको ठहर्‍यो
५७. भन्या ग्रैन वमोजीम् वुझाउला भन्या जो चाहिन्या वेहोराको सावीक्वालाको अर्कगा ली

५८. षाई ली सो अर्कण वमोजीमको माल सावुद बुझी
ली रसीद गरी दिनु औ सके

५९. सम्म ४ चत्री ···२··· र नसके असल असल
सालीक्राम १० वला मंजुर हुने वमोजीम्

६०. को ल्थाइ चढाउला सो लेओीयाका सालीक्ग्राम
तक्न्याउन सकिनस् र ह्रास्रा

६१. मंजुर भयेन भने मोहरू येक सये रुपैआं चढाउनु
भनी ···१··· का उपल्ला पौवाको

६२. अनानती काजकाम् गर्नु भनी १ साला पट्टा गरी
वक्स्यौं अफना षातीर जामा (स)

६३. स ··१··· को सोझो चीताई इमान् धर्म समझी
अमानती काम गर्न्या काम गर—

तपसील

६४. आम्दानी तल्ला पौवावाट चलान् मै जान्या—
६५. फनुवा चावल मुरी १२१। मध्ये— १२०।—
६६. दालके मास मुरी— १७।१०
६७. वेसार पाथी— ।५
६८. फलुवाचावल मुरी १२१। मध्ये सरीले
नुन मुरी— १।
६९. धान्— ९९।१३
७०. घ्यू दोवा वाउको आम्दानीवाट मोहरु
।५० को धार्नी १ऽ का दर्ले घ्यू धार्नी
७१. ४०ऽ र नपुगेको जो चाहीन्या स्मेत्—

---

७२. षर्च—
७३. नीत्य पुजाके चैत्र सुदी ९ रोज रामनवमी देषी
कार्तीक सुदी १५ रोज तक मैन्हा
७४. ७ दीन ७ के ६१ साल चैत्र ११ गते ४ मा
भयाका सनद वमोजीमको मोरु ३५।६६।१
७५. ऐके अक्षता चावल— ।५।३।४
७६. नीत्य पुजा र चौमासा पाठ गर्ने ब्राम्हणके
ऐ सनद वमोजीम्को मो रु— ७८।६६
७७. मंदीरमा चौमासा पाठ गर्ने व्राम्हण के
सावीक वमोजीम् २० गंडी रु
७८. ४२। के २५ गंडीले मोरु— ३३।६६
७९. वपु दोवा पाथीके ऐ सनद वमोजीम् मोहरु— ८।

८०. नीत्य पुजा गर्दा लाउने धोती २ के मोरु— २।
८१. नीत्ये पुजा गर्ने व्राम्हणके जागीर के रु— ३५।

---

८२. पुजाहारी व्राम्हण के ६१ साल चैत्र ११ गतेका
सनद बमोजीम् सीधा—
८३. चावल— २।१४।४ वेसार— ।१७।२।
८४. दाल— ।१२।४।५ घ्यू— १६२।।३।
८५. नुन— ।१।२।८ × × ×

---

८६. पुजा सुसारेके सीधा सरजाम पुजाहारीके ऐ ऐ
वमोजीम् सदर—
८७. ···१··· का पौवामा हीउ फाल्न्याके
जागीर मोहरु— ३।
८८. डीठा १ के वर्ष १ को जागीर धान मुरी— ५१।
८९. पौवाली वहिदारके ऐ ऐ धान मुरी— ३०।
९०. पौवालीके— १५। वहीदारके— १५।

---

९१. पौवाली वैदार जना २ के सीधा—
९२. दीन १ को जना १ के चावल माना ।.।२ दाल
मुठी ।.।.।२ नुन मुठी आ
९३. धा ।.।.।.।। वेसार दीन ३० को माना ।.।१ घ्यू
तोला २ का दर्ले ज
९४. ना २ के वर्ष १ को दीनु पर्न्या दीनु—

---

९५. दारुवा वोक्ने जना २ के—
९६. वर्ष १ को जागीर धान मुरी ९।६।४ ले जना २ के
धान— १८।१३
९७. ऐ के सीधा चैत्र सुदी ९ रोज देषी कार्तीक सुदी १५
रोज तक गो
९८. ज १ को जना १ के चावल माना ।.।२ दाल मुठी
।.।.।२ नुन मुठी आ
९९. धा ।.।.।.।।का हीसावले जना २ के सीधा दीनु—

---

१००. इती सम्वत् १९७० साल चैत्र ७ गते
छ शुभ ○ छाप ○ छाप

## परिशिष्ट ८

(उर्दुमा रातो अक्षरमा दस्तखत)

श्री

श्री राजा

१

१. स्वस्ति श्री मच्चौतरिया केशरि
२. जङ्गपराक्रम साहवाट डिठ्ठा लक्ष्मी प्रसाद वींष्टके

यथोचीत्

३. उप्रान्त तैले भाद्र १६ गते ३ मा चढाई पठायाको
वीन्ती. पत्र आई
४. पुगी कीस्तार. जाहेर भयो. उपल्ला पौवाका इलाका
मीत्रको रुषहरु
५. ढले परे सुकेका काटी ल्याई. साधु सन्तलाई धुनी
भात पकाउन ला
६. ई दीनु पर्ने. हुनाले यो भाद्र १. गतेमा. ठुलो हावा
आई ढलेको रुष ३
७. लीन पठाउदा. साङ्दोको माहिलो छोरा लामाले
जवरजस्ती गरी ल
८. गी दीयेन भनी लेषेका लाइ. त तेस्पौवाको हाकीं मै.
सो पौवा इ
९. लाका को रूषहरु ढले परेको सावीक् दर्षावीक् देषी
पौवामा ल्या
१०. ई जोगर्नु पर्ने षर्च गर्नु पर्ने हो भने. सो वमोर्जी
आफुले नल्याई
११. जवरजस्ती गरी लग्याको हो भने लैजाने लाइ वीगो
डंड स्मेत् गर्नु
१२. पर्ने सो वमोजीं गर्न. तागत्. तेरो छैनस् भने ··· १ ···
वाट राषेका
१३. अडा. अदालत्मा नालेसदी सो रुष लैजानेलाई डंड
वीगो गरा
१४. उन. नसकी जाहेर गरी पठायाको देषदा त नादानी
रहेछस् भं
१५. न्ये वुझी वक्से लेषीया वमोजीं आफ्नु हक पुग्ने
रुष जवरजस्ती
१६. गरी लैजाने लाइ. तेरो तागत् छ भने तैले गकी
वीगोर डंड गरी
१७. नी स्याहामा आम्दानी वाधनु सक्दैनस् भने ··· १ ···
वाट राषी व
१८. वसेका अडा. अदालत्मा नालेस्दी वीगो डंड उपर
गरीनस् भ
१९. ने. सो वीगो डंड. तैलाई जरीवाना. भै आउने छ
इती सम्वत् १९७१
२०. साल. आस्वीं १ गते ५ शुभम्—